# काठमाडौं उपत्यकाका कलात्मक झ्यालहरू

चन्द्र बहादुर जोशी



नेपाल राजकीय प्रज्ञा - प्रतिष्ठान

# काठमाडौं उपत्यकाका कलात्मक झ्यालहरू

## (प्राविधिक शब्दावली र सामग्रीको एक चिनारी)

लेखक

चन्द्र बहादुर जोशी

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान




नेपालले प्रातःस्मरणीय कवि राजा **श्री ५ महेन्द्र**लाई पायो र २०१४ मा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानलाई पायो। नेपालले कलाकार **श्री ५ वीरेन्द्रवीरविक्रम शाहदेव**लाई पायो र २०३१ मा यस संस्थालाई अझै परिष्कृत रूपमा पायो। राष्ट्रिय सार्वभौमिकताका संरक्षक राष्ट्रनायकबाट प्रज्ञाको यस क्षेत्रलाई पनि कृपापूर्ण संरक्षकत्व प्राप्त हुनु गौरवको विषय हो र नेपालको भौतिक विकासको साथै बौद्धिक विकास पनि होओस् भन्ने मौसूफ सरकारको सदिच्छाको सङ्केत पनि हो। आफ्ना संरक्षकबाट वेलावेलामा उपलब्ध हुने 'हाम्रो देशका प्राचीनतम मूल्यहरूलाई सँगाली आधुनिक विश्वमा नयाँ मान्यता, नयाँ आदर्श र एक उज्ज्वल भविष्यको खोजी गर्न प्रयास भइरहेको कुरा प्रतिपादन गर्ने' भन्ने जस्ता अमूल्य निर्देशनहरूमा प्रज्ञा-प्रतिष्ठान निरन्तर अगाडि बढ्न चाहन्छ।

स्वतन्त्र राष्ट्रको परिचय उसको मौलिकतामा हुन्छ। ऊ आफैँ सोच्न सक्छ र आफूखुशी रच्न सक्छ। अतीत सपना हो-- जसलाई पुर्खाले देखे। अतीतको गर्व मात्र गर्ने जाति बूढो हुन्छ। हामी पुर्खाका सपनालाई त्यसरी वर्तमानमा उतारौँ, जसरी शिशुको अनुहारमा माता-पिताको मुखाकृति प्रतिबिम्बित हुन्छ। वर्तमान रचना हो-- जहाँ हामी जीवनलाई रच्छौँ। जीवनले हामीलाई रच्छ -त्यो प्राकृत घटना हो, हामी जीवनलाई रच्छौँ -त्यो जीवनमूल्यको रचना हो। जुन जाति वर्तमानलाई भोग्छ मात्र, त्यसको भविष्य नै हुन्न। जीवन्त जाति चिन्तनमा बिउँझन्छ र चरित्रमा यात्रा गर्छ। भविष्य कल्पना हो -हामी भावी पुस्ताको निम्ति कल्पन्छौँ। पेटमा फुल बोकेका पन्छी गुँड बनाउन थाल्छन् -सुन्दर वर्तमानलाई रचना गर्नेहरू नै सुन्दर भविष्यको कल्पना गर्छन्। केवल कल्पना त नशा मात्र हो, त्यसमा दिशाबोध नै हुन्न। भविष्य त्यतैतिरबाट आउँछ, जतातिर हामी यात्रा गर्छौँ स्वतन्त्र राष्ट्रको जीवन मूलधाराजस्तो हुन्छ -जो बग्दै पनि जान्छ र बाटो खोज्दै पनि जान्छ। हामी सुन्दरलाई रच्तै पनि जाऔँ र झन् सुन्दरलाई खोज्दै पनि जाऔँ।

वि.सं. २०४६ वैशाख ४ गते

**माधवप्रसाद घिमिरे**
कुलपति
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# प्रकाशकीय

**काठमाडौं उपत्यकाका कलात्मक झ्यालहरू** नामक यस पुस्तकमा यसको नामअनुसार नै उपत्यकाका तीनै शहर काठमाडौं, भक्तपुर र पाटनका काठका प्राचीन कलात्मक झ्यालहरूको नमूनासहित शिल्पप्रविधिको उपयोगी सूचना पाइन्छ। हाम्रो नेपालको राजधानीको नाम **काष्ठमण्डप** (एउटै रूखको काठले बनेको मण्डप) शब्दबाट बन्नु नै नेपालीहरूको मनमा काष्ठकलाप्रतिको उत्कृष्टताको सूचना हो। नेपाल अधिराज्यमा जहाँ जे प्राचीन उत्कृष्टताका चिह्न छन्, ती त्यहींका मात्र नभएर नेपालीमात्रका सांस्कृतिक सम्पदा हुन्। सांस्कृतिक सम्पदाको संरक्षण र संवर्धन हाम्रो पहिलो कर्तव्य हो। प्रस्तुत पुस्तकले काष्ठकलाका झ्यालको शिल्प-प्रविधिलाई लुप्त हुनबाट बचाउनेछ, त्यसबाट कैयौं गुण सिकेर काष्ठकलाको विकास गर्नमा पनि बल पु-याउनेछ र राष्ट्रको नव निर्माणमा प्राचीन कलाको शैली र सुन्दर सार्थक बुट्टाहरूको प्रयोग गर्नको निम्ति पनि प्रेरणा प्रदान गर्नेछ। आफ्नो अध्ययन र अध्यवसायद्वारा यति उपयोगी पुस्तक तयार पार्नुहुने प्रसिद्ध इन्जिनीयर श्री चन्द्रबहादुर जोशीलाई प्रज्ञा-प्रतिष्ठानको तर्फबाट बधाई-ज्ञापन गर्दछु। प्रविधितर्फको यस्तो आवश्यक योजना तयार पारी कुशलतासाथ कार्यान्वयन गर्नुभएकोमा प्रसन्नता प्रकट गर्दै विज्ञानतर्फको कार्यसमेत हेर्नुहुने सदस्य-सचिव डा. तीर्थबहादुरजीप्रति पनि साधुवाद।

२०४६।६।२

**विजयबहादुर मल्ल**
उपकुलपति
नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

# संयोजकको भनाई

नेपाली संस्कृति र सभ्यताको इतिहासलाई ताजारूपले अभिव्यक्त गर्नमा नेपाली काष्ठकलाले सफल भूमिकाको निर्वाह गरेको छ । मल्लकालीन नेपालको समृद्ध समाजमा विकसित भएको कला, साहित्य, संस्कृति, ज्ञान-विज्ञान र प्रविधिको द्योतकको रूपमा रहेको काष्ठकला विशेष आकर्षणका वस्तु बन्न पुगेका छन् । आजभन्दा झण्डै आठ सय वर्षअगाडि सम्बत् १२०० भन्दा पनि पहिले निर्माण भएको 'काष्ठमण्डप' लाई अतीतको गर्भमा बोकेर वर्तमान काठमाण्डौं तीव्र विकासको बाटोमा लम्कँदैछ । यस लम्काइमा हाम्रो कला कौशल र तिनमा निहित कालिगढी सीप, वैज्ञानिक आधार र प्राविधिक गुणाहरूलाई यसैपछि छोडेर गएमा हाम्रो गन्तव्य स्थान कहाँ हुन्छ र हाम्रो आफ्नो पहिचान के हो ? भन्ने प्रश्न नै हाम्रो लागि बाधक बन्न जान सक्दछ । यसै भावनालाई मध्यनजरमा राखेर यस पुस्तकको निम्ति विषय वस्तुहरूको चयन गरिएको छ ।

कला एक साधना हो भने सीप त्यसको उपलब्धि । त्यस अर्थमा कुनै पनि कलाकृति युगबोधक पनि हुन्छ । तसर्थ कलाकारले आफ्नो भित्री हृदयको अनुभूतिलाई प्रकटरूप दिन कुन माध्यमको छनौट गर्दछ, कस्तो वैज्ञानिक आधार अपनाउँदछ र कुन प्रविधिलाई प्रयोगमा ल्याउँदछ भन्ने कुरामा विशेष अध्ययन तथा अनुसन्धान हुनु आवश्यक भएको छ । सयौं बर्षा, शित र ग्रीष्म खपिसकेका काठमाण्डौंका झ्यालहरूको निर्माण-प्रविधिसँग सम्बन्धित शब्दहरू, ती झ्यालमा प्रयोग भएका बुट्टा आदि जनाउने शब्दहरू, तथा कालिगढी ज्यावलका नामावलीहरू आदिको सँगालोको रूपमा प्रस्तुत पुस्तक लेख्नमा श्री चन्द्रबहादुर जोशीजीले निकै प्रयत्न गर्नु भएको छ । एउटा झ्यालको विभिन्न अङ्ग र प्रत्यङ्गहरूलाई मात्र केलाएर हेरेमा पनि ७०।७५ वटा बुट्टाका नामहरू प्राप्त भएका छन् । काठ चिर्नेदेखि लिएर बुट्टा कुँद्ने वा कोर्ने तथा झ्याल जडान गर्ने कार्यलाई जनाउने ५०।६० क्रियापदहरू भेटाईएका छन् । ज्यावल र उपकरण तथा तिनका विभिन्न भाग जनाउने शब्दहरू पनि यथेष्ट मात्रामा रहेको देखिन्छ । यस्ता शब्दहरूलाई खोतलेर हेरेमा हाम्रो प्राविधिक शब्दको भण्डार निश्चय नै गहकिलो हुन्छ र यी शब्दका आधारमा विभिन्न कालिगढी र प्रविधिसम्बन्धी महत्वपूर्ण रहस्यहरू उद्घाटित हुन जान्छ भन्ने आशा लिन सकिन्छ ।

चार जात छत्तीस वर्णका एउटै सँगालोको रूपमा रहेको यो राष्ट्रलाई अरू समृद्ध र शक्तिशाली बनाउन विभिन्न जात जाति वा समुदायमा विकसित भएको कला, संस्कृति, ज्ञानविज्ञान र प्रविधिलाई आत्मसात गर्न आवश्यक पर्दछ । पूर्व हिमालमा शेर्पा जातिले विकसित गरेको चौरीपालन र प्रजननको प्रविधि, राई र लिम्बु जातिको कपडा (ढाका) बुन्ने प्रविधि, गुरूङ्हरूको ऊनी राडी-पाखी बुन्ने प्रविधि र त्यस्तै नेवारहरूको काष्ठकला र वास्तुकला विषयका प्रविधिहरू परापूर्वकालदेखि आजसम्म पनि कायम नै छन् । त्यस्तै विभिन्न जातिका नेपालीहरूले सँगालेका नाच, गान, भेष-भूषा, मन्दिर, गुम्बा, पाटी-पौवाजस्ता धार्मिक स्थलहरू तथा अनेकौं सामाजिक मान्यताहरू अझै पनि ज्यूँदा छन् । हाम्रा यी सांस्कृतिक निधि तथा प्राविधिक उपलब्धिहरूलाई वर्तमानको आवश्यकतासंग गाँस्न सकेमा हाम्रो विकासमा आफ्नोपनको सुवास कायम रहन्छ र आफ्नो स्वत्वको संरक्षण हुन्छ भन्नु अत्युक्ति नहोला ।

काठमाण्डौं उपत्यकाका झ्यालहरूमा जडिएका काष्ठकलाको विषयमा संचालन गरेको योजनाअन्तर्गत कार्यरत रही विभिन्न बहाल, मन्दिर, पाटी-पौवा देवल र ज्यासलमा गएर सम्बन्धित व्यक्तिहरूसंग सम्पर्क राखेर सामग्री संकलन गरी यो पुस्तक लेखिदिनु भएकोमा श्री चन्द्रबहादुर जोशीजीलाई धन्यवाद ज्ञापन गर्दछु ।

२०४५।११।१५

**– डा. तीर्थ बहादुर श्रेष्ठ**

# प्राक्कथन

विगत घटनाहरू इतिहासले बताउँछ भने प्राचीन ज्ञान विज्ञान र प्रविधिका चमत्कारहरू सङ्ग्राहलयले देखाउँछ । यसरी नै पूर्वजहरूका कलाकौशलहरू तिनहिरूले सृजना गरी गएका कृतिहरूले प्रदर्शित गरिराखेका हुन्छन् ।

हाम्रो देशमा पनि यी सबै चीजको कमी थिएन । तर इतिहासको अभावमा कतिपय महत्वपुर्ण घटनाहरू बिर्सेर गए । स्वस्थ सङ्ग्राहलयको कमीमा ज्ञान विज्ञान र प्रविधिका चमत्कारहरू लोप भएर गए। अनि आध्यात्मिकता, व्यक्तिगत स्वार्थ र पूंजीवादकत्वको होडबाजीमा विकासको चरम चुलीसम्म पुगिसकेका नेपाली ज्ञान, सीप र कला-कौसलताले भरीपूर्ण कृतिहरू पनि निरन्तर यस देशबाट अदृष्य हुँदै गइरहेको सबैले महसुस गर्दै आएका छन् । अब यसको साथसाथै हाम्रा प्राचीन भाषा र सँस्कृति पनि एक दिन यस देशबाट बिलाएर जाने पो हो कि भन्ने कुरा सोच्नु पर्ने स्थिति आइपुगेको छ ।

नेपालीहरूको बोलीमा आज आफ्नै भाषाका कतिपय शब्दहरू नौलो प्रायः भएर गइरहेका छन् । शहरको त के कुरा, डाँडा-पाखा निवासीहरूको दैनिक चलन चल्तीमा आउने बोलीमा पनि अब विदेशी शब्दहरूले आफ्नो ठाउँ ओगटी सकेको पाइन्छ । कतिपय प्राचीन शब्दहरू त अझ कतै उल्लेखसम्म पनि नभेकन हराएर गएका छन् । यी सब प्रकृयाहरू आफनो भाषा, सँस्कृति र कला-कौशलताको संरक्षण र सम्वर्धन गर्ने हाम्रो प्रयासको ठीक विपरीत भइरहेको हामी पाउँछौं । यो मोड विना हाम्रो अथक परिश्रम रोकिएला भन्नु पर्दैन । यसको लागि त समस्त नेपाली जनताको सहभागिताको अत्यन्त आवश्यकता छ । हाललाई हामी कहाँ भएको भण्डारलाई मात्रै संरक्षण गर्न सकेको खण्डमा पनि हाम्रो प्रयासको एक महत्वपूर्ण भाग सफल भएको हामीले ठान्नु पर्दछ ।

यसै तथ्यलाई हृदयङ्गम गरी विभिन्न क्षेत्रबाट अनेकौं प्रयास भइरहेको पनि छँदै छ । तर प्राचीन काष्ठ कला खास गरी कलात्मक झ्यालहरू र त्यससित आबद्ध सीप र ज्ञान, कला र कौशलता एवं भाषा र सँस्कृतिको संरक्षण तथा प्रवर्धनको लागि भने त्यति गहकिलो प्रयास अझै गरिएको पाइँदैन । अतः यस अभावको परिपूर्तिको लागि विभिन्न कदम चाल्नु अत्यावश्यक देखिन आउँदछ । यसै सन्दर्भमा यस पुस्तकको रचना गरिएको छ ।

हुन त कार्य थालनी गर्नु अघि त्यस प्रकारका झ्यालहरूको ऐतिहासिक, धार्मिक, सामाजिक एवं प्राविधिक जस्ता विभिन्न पक्षहरूको समेत खोजी गरी एक संक्षिप्त पुस्तक नै तयार पार्ने लक्ष्य राखिएको थियो । तर सीमित समय, श्रोत र साधनको कारणले गर्दा केवल प्राविधिक पक्षलाई मात्र यसमा समावेश गर्न सकियो ।

यस पुस्तकमा झ्यालको महत्व, किसिम, विभिन्न अङ्ग प्रत्यङ्गको नामावली, तिनीहरूको निर्माण र निर्माण कार्यसित सम्बन्धित प्राविधिक शब्दावली र सामाग्रीहरू समेत समावेश गर्नुको अर्थ यस क्षेत्रसित सम्बन्धित वा असम्बन्धित प्राविधिक वा अप्राविधिक स्वदेशी वा विदेशी सबैलाई आधारभूत ज्ञान दिनुको साथै एउटा पहिलो चिनारी गर्नु पनि हो ।

यस पुस्तक तयार पार्दा प्राविधिक क्षेत्रको मात्र भए पनि सकभर संक्षिप्त सामाग्रीहरू नै समावेश गर्ने प्रयास नगरिएको होइन । तर विभिन्न कारणवश "प्राविधिक" शब्दको परिभाषा भित्र पर्ने सबै सामाग्रीहरू यसमा समावेश गर्न सकिएन। त्यस्तै यसमा केवल आधारभूत झ्यालहरूकै मात्र संक्षिप्त नक्सा समावेश गरी अरू बाँकी शब्द र चित्रमा मात्र उल्लेख गरिएको छ । ज्यावलहरूको हकमा आधुनिक उपकरणहरूलाई विशेष जोड दिइएको छैन ।

सामाग्री सङ्कलन गर्ने सिलसिलामा खास गरी श्री शान्ताराम देवको " ग्लिम्प्सेस् अफ् उड् वर्किङ इन् नेपाल" नामक पुस्तक विशेष सहायक सिद्ध हुन गएको छ । त्यस पुस्तकमा समावेश भइसकेका चित्रहरू मध्ये कुनै कुनै प्रस्तुत पुस्तकमा पनि दोहोरिन गएको छ । तर खास गरी आँखी झ्यालहरूको बुट्टा स्पष्ट पार्ने नक्साहरूलाई भने यसमा दोहऱ्याउने प्रयास गरिएको छैन ।

यस पुस्तक तयार पार्नमा दिलो ज्यान दिई सहयोग गर्ने पाटन, श्रीवहाल देशेमद् झ्यालका श्री सप्त राज शाक्यलाई म हार्दिक धन्यवाद नदिई रहन सक्तिन। त्यस्तै आफ्नै काम छोडेर पनि यस पुस्तकको लागि आवश्यक सबै नक्साहरू तयार पारी दिने वहाँकै सुपुत्र श्री उत्तम राज शाक्यलाई पनि म यहाँ धेरै-धेरै धन्यवाद दिन चाहन्छु।वहाँहरूको अथक प्रयास विना यो पुस्तक यस रूपमा प्रस्तुत गर्न सायद कठिन नै पर्थ्यो होला । त्यसरी नै विभिन्न सामाग्रीहरू सङ्कलन गर्न यथेष्ट मात्रामा सहयोग गर्ने हुने औद्योगिक सेवा केन्द्रका मित्र श्री सुन्दर राज शिलाकार, राष्ट्रिय अभिलेखालयका आदरणीय दिदी

श्रीमति ऋद्धि प्रधान र पाटन क्राफ्टस् (प्रा.) लि., इखालखु पाटनका श्री श्यामदास अशान्त प्रति पनि म आफ्नो आभार प्रकट गर्न चाहन्छु । प्रचलित स्थानीय नाम लाई अंग्रेजीमा उल्था गर्नु कम कठिन कार्य होइन । यसमा अथक परिश्रम गरी सहायता गर्ने मेरा मित्र आर्किटेक्ट श्री रश्मि बहादुर श्रेष्ठलाई म दिलैदेखि धन्यवाद दिन चाहन्छु । आफूलाई आवश्यक परेको जुनुसकै वेलामा पनि कति गाह्रो नमानी दौडधुप गरी समयमा कार्य पूरा गरी दिने फोटोग्राफर मित्र श्री जयन्ती जोशीको पनि म सराहना नगरी बस्न सक्तिन। वहाँहरू बाहेक यस कार्यमा मलाई धेरै सहयोग पु-याउनु हुने अन्य सबै साथीहरू मेरो प्रशंसाको पात्र हुनुहुन्छ।

अन्तमा यस पुस्तक लेख्ने सुवर्ण अवसर दिनुको साथै हरवखत आवश्यक सरसल्लाह र प्रेरणा समेत दिई सहयोग पु-याई दिनु हुने नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानका आदरणीय सदस्य डा. श्री तीर्थ बहादुर श्रेष्ठ प्रति म आफ्नो हार्दिक कृतज्ञता ज्ञापन गर्न चाहन्छु ।

यस पुस्तकले आफ्नो लक्ष्य पूरा तवरमा हासिल गर्न नसके तापनि सम्बन्धित क्षेत्रमा कार्यरत एवं उत्सुक सबै महानुभावहरूको लागि केही लाभ हुन गएको खण्डमा र नेपालको प्राचीन कला संरक्षण गर्ने दिशातर्फ यसबाट केही न केही योगदान पुग्न गएको खण्डमा म आफ्नो प्रयासलाई सफल भएको ठान्दछु। साथसाथै यस पुस्तकमा हुन गएका त्रुटी र कमी माथि सहर्ष क्षमा याचना गर्दै त्यसको सुधार गर्न आफ्ना अमूल्य सुझावहरू दिन हुन पाठक महानुभावहरूमा म विनम्र अनुरोध गर्दछु।

**चन्द्र बहादुर जोशी**

वानेश्वर
२८ मार्ग २०३९

# KEY TO PRONUNCIATION

To make this work useful also for the foreigners, each Nepali word has been spelled in Roman letters. Because of the limitation of Nepalese printers, international phonetic transcription was not possible. However, diacritical marks have been used to guide pronunciation. Non-Nepali readers will benefit by having a look at the following examples:

**VOWELS**

| Symbol | Pronounced as | In |
|---|---|---|
| a | u | fun |
| ä | a | far |
| i | i | if |
| ē | ee | deed |
| u | u | bull |
| ū | oo | moon |
| ě | e | bed |
| ȯ | o | vote |
| ã | a (but usually) | fun |
| aã | (French) ant, | restaurant |
| ū | u (but usually) | bull |

**CONSONANTS**

| Symbol | pronounced as | in |
|---|---|---|
| k | ck (velar) | back |
| kh | kh (velar plosive) | Sikh (India) |
| g | g | go |
| gh | gh (velar Plosive) | ghost |
| n | n | monk |
| ch | ch | church |
| chh | chh (palato-alveolar fricative) | Chhyang (Nepali drink) |
| j | j | jug |
| jh | jh (palato-alveolar fricative) | Jhelum(a river of Punjab) |
| t | t | toy |
| ṫh | th (alveolar plosive) | lathi (Indian stick) |
| ḋ | d | dog |
| ḋha | dh (alveolar plosive) | dhoka (door in Nepali) |
| ṫ | t (dental) | tala (below in Nepali) |
| th | th | thick |
| d | d (dental) | badal (cloud in Nepali) |
| dh | dh (dental) | dhani (rich in Nepali) |
| n | n | name |
| p | p | lip |

| Symbol | pronounced as | in |
|---|---|---|
| t | ph (bialabial plosive) | photo (in Nepali) |
| b | b | big |
| bh | bh (bialabial plosive) | Bhutan |
| m | m | man |
| ya | you | young |
| r | r | run |
| l | l | lap |
| w | w | want |
| s | s | sun |
| sh | sh | shun |
| h | h | hut |

Some sounds do not exist in the English language. In such cases, therefore, attempt has been made to convey some idea of sound by making descriptive comments. In case of doubt, however, it is advisable to listen to some native speakers.

# सूची पत्र

**विवरण** **पृष्ठ**



# Contents

# (१) नेपाली समाजमा कलात्मक झ्यालको स्थान

मानव जीवनमा झ्यालले जुन किसिमको महत्वपूर्ण स्थान ओगटेको छ, त्यो हामी हरहमेशा महसुस गर्दै आएका छौं । आदिकालदेखि नै अर्थात जहाँदेखि मानिसहरूले बसोबास गर्नको लागि गुफा, छाप्रो इत्यादिको निर्माण गर्न थाले त्यसबेलादेखि नै हावाको आवत-जावत, घाम अनि सुरक्षाको लागि झ्यालको सृजना, उपयोग एवं विकास भएको अनुमान गरिन्छ । त्यसैले झ्याललाई मानव सभ्यताको एउटा प्रतीक पनि भनिन्छ ।

हाम्रो देशमा झ्यालको प्रचलन, विविधता र विकास खासगरी काठमाण्डौं उपत्यका भित्र नै भएको पाइन्छ । यसै विकासको परिणाम स्वरूप उपत्यकाका तीनै शहरमा कलात्मक झ्यालहरूको व्यापक उपयोग भएको र समयानुसार यसले देशको सामाजिक, आर्थिक, धार्मिक एवं राजनैतिक क्षेत्रमा समेत महत्वपूर्ण भूमिका खेल्दै आएको तथ्य आज हाम्रो सामु खडा छ ।

काष्ठ कलामा आज नेपालले विश्वमा जुन प्रतिष्ठा आर्जन गरेको छ; त्यसमा यी कलात्मक झ्यालहरूको अत्यन्त ठूलो देन छ । यसरी यी कलात्मक झ्यालहरू अब आएर केवल मानवसभ्यताको मात्र नभई वास्तुकलाको पनि एक प्रतीक बन्न पुगेको छ ।

कलात्मक झ्याहरूमा संझ्यालको विशेष स्थान छ । संझ्याल (सं - कपाल) भन्ने बित्तिकै झ्यालको कपालसित खास सम्बन्ध भएको बुझिन्छ । हुन पनि काठमाण्डौं उपत्यकाका महिला आदिवासीहरू (नेवार जाति) यसै झ्यालमा बसी कपाल कोर्ने काम गर्थे । यसको साथसाथै अरू सृङ्गार पटारका कामहरू पनि यहीं हुन्थे । त्यस वाहेक प्रेमका गीतहरू गाउने र बाटामा हिंडेका युवकहरू संग माया प्रीति जोड्ने कामको लागि पनि यी झ्यालहरूको प्रयोग हुने गर्दथे । त्यस्तै बत्ती कात्ने जस्ता गार्हस्थ्य कार्यहरू गर्न पनि ती महिलाहरू यहीं आउँथे । यी कुरा पुराना नेवारी लोक गीतहरूबाट स्पष्ट हुन्छ । जस्तैः-

सं झ्यालय् कपि फयनाः ढेवा गोर्ल कयूका हल
छगः मुर्मु निगः मुर्मु कपि पोचा जाल योमां ।। इत्यादि ।।

अर्थात, संझ्यालमा बसेर बत्ती काती रहेकीलाई, हेर्नुस् न आमा, बाटोबाट पैसाले हिर्काएर ल्याएको । ती हिर्काएर ल्याएको पैसा एक-एक गरी टिप्दा टिप्दा बत्ती राख्ने भाँडो भरी सक्यो । इत्यादि ।

त्यस्तै आर्थिक र सामाजिक दृष्टिकोणबाट कलात्मक झ्यालहरू विनाको घरको स्थिति कतिको नाजुक हुँदो रहेछ भन्ने कुरा घरको एक अविवाहित केटीले आफ्नो आमा छेउ पुकार गर्दै गाएको गीतबाट स्पष्ट हुन्छ -

ह्यांउ थ्वं, अजि थ्वं, कता थ्वं मदुसां
सं झ्या दुथाय् लाका व्यू यो मां ।। इत्यादि ।।

अर्थात "................ इत्यादि इत्यादि नभए पनि सं झ्याल भएको घरमा त पारी दिनूस है आमा" इत्यादि ।

त्यसरी नै ८८ वर्षको उमेरमा देवरथारोहण गर्दा झ्यालबाट भित्र्याउने र दुलही भित्र्याउदा, व्रतबन्ध गर्दा तिनीहरू माथि झ्यालबाट लावा अविर छर्ने इत्यादि प्रथाबाट पनि धार्मिक क्षेत्रमा यसको महत्व दर्शिन्छ । यी प्रथाहरू अध्यावधि छँदैछन् ।

यसै सिलसिलामा पाटनको च्यासल टोलमा देखाउने "झ्यालचा" भन्ने खेल यहाँ उल्लेख गर्नु उचित देखिन्छ। यो एक किसिमको छायाँ चलचित्र हो, जसको आविष्कार फिल्मी जगत शुरू हुनु अगाडि नै भएको अनुमान गरिन्छ । यस खेलमा त्यहाँ अवस्थित पाटीको एउटा झ्यालमा पर्दा राखी त्यसको पछाडि बत्ती बाली यो चलचित्र देखाउने गर्थे। झ्यालको पर्दामा छाँया पारी देखाउने खेल भएको हुँदा यो खेल "झ्यालचा" को नाउँबाट प्रख्यात छ । यसले झ्यालको साँस्कृतिक क्षेत्रमा पनि महत्व भएको स्पष्ट पार्छ ।

काठमाण्डौं उपत्यका भित्र छरिएका कलात्मक झ्यालहरूको इतिहासलाई केलाएर हेर्ने हो भने यसको विकास र प्रचलन खासगरी पाटन मै भएको अनुमान गर्न सकिन्छ । त्यसबेला तीनै शहरका राजाहरूको बीच भएको प्रतिस्पर्धापूर्ण वातावरणले गर्दा पछि यो कलात्मक झ्यालहरू भक्तपुरमा पनि बनाउन त्यहाँका राजाहरूले आफ्नो देशका छोरीबेटीहरूलाई पाटनका बुढा कर्मीहरूसित बिहे गर्न लगाई पछि तिनीहरूका पतिहरूलाई घर ज्वाई गरी भक्तपुरमा नै ल्याई राखेको इतिहासले राजनैतिक क्षेत्रमा समेत यिनीहरूले महत्वपूर्ण भूमिका खेलेको तथ्य औंल्याउँछ।

त्यस्तै काठमाण्डौंको हनुमान ढोका र त्यहाँ वरिपरी जडान गरिएका विभिन्न कलात्मक झ्यालहरू पनि पाटन निवासी बुट्टा कर्मीहरूले निर्माण गरिएको हो भनी भनिन्छ ।

आज यी कलात्मक झ्यालहरू हाम्रो गौरवको प्रतीक मात्र नभई देशको आर्थिक दृष्टिकोणबाट पनि धेरै महत्वपूर्ण हुन आएका छन् । जसरी हराभरा पहाड, जंङ्गल, नदी-नाला र हिमाली श्रृंखलाहरूबाट आज देशलाई आर्थिक लाभ भइरहेको छ; त्यसरी नै यी कलात्मक झ्यालहरूबाट पनि लाभ हुन सक्ने आशा लिन सकिन्छ । यसको लागि काठमाण्डौं उपत्यका भित्रका प्रमुख कलात्मक झ्यालहरूको विविधीकरण, विश्लेषण र महत्व बारे अनुसन्धान गरी यसतर्फ पर्यटनको ध्यान आकर्षित गर्नु पर्ने देखिन्छ ।

देशका देव-देवालयहरूको मात्र होइन यी कलात्मक झ्यालहरूले प्रत्येक घर-घरको शोभा समेत बढाई रहेको आज हामीले प्रत्यक्ष रूपमा देखिरहेका छौं । साँच्चै नै भन्ने हो भने यसलाई प्रत्येक नेपालीको सौन्दर्यता बढाउने एउटा गहनाको रूपमा लिन सकिन्छ । कवि दुर्गालाल श्रेष्ठज्यूले आफ्नो कवितामा यसलाई बडो राम्रो ढंङ्गमा उल्लेख गर्नु भएको छ -

"गनंकी पिल्वया स्वयव् जिलाखय्
थुलि बौंला थुली स्वय् ज्यू हं
कि जः पिज्वः थें भललल खय्क
जिगु म्ह छम्हं हिसी भय् व्यहं ।"

अर्थात सं झ्यालमा एउटा यस्तो अद्भूत गुण छ कि शरीरको कुनै पनि अङ्ग त्यसबाट निकालिंदा त्यस अङ्गको प्रत्येक भागबाट एक किसिमको किरण उत्पन्न भई हिस्सी परी राखेको हुन्छ ।

धार्मिक महत्व मात्र होइन सामाजिक महत्व पनि त्यति नै भएको यस सम्पदाको संरक्षण प्रति निराशावादी बन्दै कविजी अगाडि लेख्नु हुन्छ -
" हायू! थ्व झ्याल पिलुय्या थौं थें
कन्हे हनं स्वय् दैन मदै
द्यो हे मखुसां च्यः नं जि मखु
थुलि नं जि ब्वे दैन मदै !"

अर्थात आज जस्तै भोलि पनि यस झ्यालबाट देवताको रूपमा होइन मानवकै रूपमा आफ्नो शरीरलाई बाहिर निकालेर सौन्दर्यता देखाउन पाइने हो कि होइन ।

अनि, केही गरी साँच्चै नै यी झ्यालहरू सधैंका लागि बिलाएर जाने स्थिति खडा भएमा यस देशको भविष्य कतिको अन्धकारमय हुने होला भन्ने चिन्ता गर्दै कविजी अन्त्यमा भन्नु हुन्छ :-

" थ्व झ्या मदय्वं मन्त जि मन्त,
थुलित अनिष्ट अमंगल जुइ
न्हिनय् न्हि नय् नं ध्वं हा वैगु
भि र्भा दंगु जंगल जुई ।"

अर्थात् यो झ्याल नहुनको अर्थ नै यहाँ अनिष्ट र अमङ्गल भएको सङ्केत हो र यो ठाउँ एउटा यस्तो जंङ्गलमा परिवर्तन भएको बुझे हुन्छ, जहाँ सूर्य कालमै स्यालहरूको जमघट हुनेछ ।

उपर्युक्त तथ्यहरूबाट कलात्मक झ्यालको महत्व यसको सृजना कालदेखिनै अटूट रूपमा बढ्दै गइरहेको र आज आएर यसको अस्तित्व देशकै अस्तित्वसंग गाँसिएको स्पष्ट हुन आउँछ ।



चित्र १. काठमाण्डौं हनुमान ढोका दरवार स्थित विमान रुपाल, गाः रुपाल, सं रुपाल, आँसी रुपाल, गोल रुपाल, विधि रुपाल, काः रुपाल इत्यादि ।



चित्र २. पाटन दरवार स्थित विमान रुपाल र आँसी रुपाल



चित्र ३.     पाटन दौवहालको निजीघर स्थित सं झ्याल, काः झ्याल र तिकि झ्याल



चित्र ४.     पाटन भातपोलको सतल स्थित सं झ्याल र आँखी झ्याल



चित्र ५.　　पाटन कुम्भेश्वरको सतल स्थित गाः रुपाल ।



चित्र ६.　　काठमाण्डौं कुमारी घर स्थित संरुयाल, गाः रुपाल, काः रुपाल, सूर्य-मुरी रुयाल, मयूर रुयाल, आँसी रुयाल इत्यादि ।



चित्र ७.  काठमाण्डौं वसन्तपूरको काष्ठ-मण्डप स्थित वाकु झ्याल ।



चित्र ८  काठमाण्डौं वसन्तपुरको नौतल्ले मन्दिर स्थित विधि झ्याल, विमान झ्याल, काः झ्याल, आँखी झ्याल इत्यादि ।



चित्र ९.        पाटन सुन्धाराको एक पाटीमा छपा रुपाल ।



चित्र १०.        काठमाण्डौं बत्तीस पुतलि स्थित एक पर्यटक होटेलमा विमान रुपाल, संरुपाल, आँरी-रुपाल इत्यादि ।



चित्र ११.	त्रिभुवन विमान स्थल भवन (भि. भि. आइ. पी लन्च) मा सँरुपाल ।



चित्र १२.	एक आधुनिक आवासीय भवन स्थित सँरुपाल ।

# २. प्रचलित कलात्मक झ्यालहरू

| प्रचलित स्थानीय नाम | नेपाली | English | चित्र | नक्सा |
|---|---|---|---|---|
| कमल झ्याः | कमल झ्याल | Kamal Jhyä (Lotus window) | १३,१४ | – |
| काः झ्याः | का झ्याल | Kä Jhyä (Single windows sandwiching a multiple window) | – | – |
| कुं झ्याः | कुं झ्याल | Kün Jhyä (Corner window) | १५ | – |
| गः झ्या | ग झ्याल | Ga Jhyä (Window placed under the roof of a temple which is generally used as nest by the pegions) | १६ | – |
| गा: झ्याः | गा झ्याल | ga Jhya (Balconied window) | १७,१८,१९ | १ |
| गो झ्याः | गोल झ्याल | Go Jhyä (Circular window) | २०,२१ | – |
| छपा झ्याः | छपा झ्याल | Chhapä Jhyä (Single window) | २२, | – |
| तिकि झ्याः | आँखी-झ्याल | Tiki Jhyä (Mesh window) | २३-३७ | २ |
| देशे मदु झ्या | देशे मदु झ्याल | Deshě Madu Jhyä (Unique window) | ३८-३९ | – |
| धनुपोता हर्द विमान झ्याः | धनुपोता हर्द ख विमान झ्याल | Dhanupotä Harda Bimän Jhyä (Window with bow type frame) | ४० | – |
| पन्च झ्याः | पन्च झ्याल | Pancha Jhyä (An assembly of five windows) | ४१ | – |
| पासुखा झ्याः | पासुखा झ्याल | Päsukhä Jhyä ( a row of five small windows) | ४२ | ३ |
| बाकु झ्याः | बाकु झ्याल | Bäku Jhyä (Symbolically halved windows in a row of odd numbers) | ४३,४४ | – |
| विधि झ्याः | विधि झ्याल | Bidhi Jhyä (Wooden jolly) | ४५ | – |
| विमान झ्याः | विमान झ्याल | Bimän Jhyä (Chariot window) | ४७,४८,४९ | ४ |
| म्हय्खा झ्याः | मयूर झ्याल | Mhyěkhä Jhyä (Peacock window) | ५०,५१,५२, | ५ |
| याकु झ्याः | याकु झ्याल | Yäku Jhyä (Windows in either side of the main entrance of a temple) | ५३ | – |
| सूर्य मुखी झ्याः | सूर्य मुखी झ्याल | Sūryěmukhi Jhyä (Sun window) | ५४,५५,५६ | ६ |
| सं झ्याः | सं झ्याल | Sã Jhyä (Oriel window) | ५७ | – |
| स्वखा झ्याः | स्वखा झ्याल | Swakhä Jhyä (Triple window) | ५८ | – |



चित्र १३. भक्तपुर पुजारी मठ स्थित कमल झ्याल ।



चित्र १४. पाटन दरवार चोकको सुन्दरी चोक स्थित कमल झ्याल ।



चित्र १५. पाटन दरबार चोक स्थित ख्वुं ऱ्याल ।



चित्र १६. काठमाण्डौं हनुमान ढोका स्क्वायरको मन्दिर स्थित गः ऱ्याल ।



चित्र १७. भक्तपुर दत्तात्रय चोक स्थित गाः रुयाल ।



चित्र १८ भक्तपुर सुकुल ढोका मठ स्थित गाः रुयाल ।



चित्र १९.	भक्तपुर दत्तात्रय चोकको पुजारी मठ स्थित गाः झ्याल ।



चित्र २०.	हनुमान ढोका दरबारको नासल चोक स्थित गोल झ्याल ।



चित्र २१.    भक्तपुर सुकुल ढोका मठ स्थित गोल झ्याल ।



चित्र २२.    भक्तपुर दत्तात्रय जाने बाटोको एउटा निजीघर स्थित छपा. झ्याल ।



चित्र २३.　काठमाण्डौं बसन्तपुरको नौतले मन्दिर स्थित आँखी-झ्याल ।



चित्र २४.　पाटन दरबार चोकको सुन्दरी चोक स्थित आँखी-झ्याल ।



चित्र २५.  काठमाण्डौं बसन्तपुरको श्वेत भैरव मन्दिर नजिकैको आँखी-झ्याल ।



चित्र २६.  पाटन दरबार चोकको सुन्दरी चोक स्थित आँखी-झ्याल ।



चित्र २७. भक्तपुर दत्तात्रय चोकको पुजारी मठ स्थित आँखी-झ्याल ।



चित्र २८ भक्तपुर दत्तात्रय चोक स्थित आँखी-झ्याल ।



चित्र २९.	पाटन दरबार चोकको मूल चोक स्थित आँखी–झ्याल ।



चित्र ३०.	पाटन दरवार चोकको सुन्दरी चोक स्थित आँखी–झ्याल ।



चित्र ३१.　　पाटन दरवार चोकको सुन्दरी चोक स्थित आँखी-झ्याल ।



चित्र ३२.　　पाटन दरबार चोकको मूल चोक स्थित आँखी-झ्याल ।



चित्र ३३.　　पाटन दरबार चोकको मूल चोक स्थित आँखी-झ्याल ।



चित्र ३४.　　भक्तपुर दत्तात्रय चोक स्थित आँखी-झ्याल ।



चित्र ३५.  पाटन दरबार चोकको सुन्दरी चोक स्थित आँखी-झ्याल ।



चित्र ३६.  पाटन दरबार चोकको सुन्दरी चोक स्थित आँखी-झ्याल ।



चित्र ३७.    भक्तपुर दतात्रय स्थित हलग्वाः हलः ग्वा बुट्टाको आँखी-झ्याल ।



चित्र ३८    काठमाण्डौं यटखाको देरोमद्‌ु झ्याल ।



चित्र ३९. पाटन गाः वहालको देरोमदु रुयाल ।



चित्र ४०. भक्तपुर सुकुल ढोका स्थित धनुपोता हर्द विमान रुयाल ।



चित्र ४१.　　भक्तपुर दतात्रयको पुजारी मठ स्थित पन्च झ्याल ।



चित्र ४२.　　पाटन गाः वहाल स्थित पासुरा झ्याल ।



चित्र ४३. काठमाण्डौं हनुमान ढोका दरबारको नासल चोक स्थित झाकु झ्याल ।



चित्र ४४. काठमाण्डौं बसन्तपुरको कविन्द्रपुर मन्दिर स्थित झाकु झ्याल ।



चित्र ४५.　　मङ्गलबजारको तलेजु भगवती मन्दिर स्थित विधि झ्याल ।



चित्र ४६.　　भक्तपुर दत्तात्रय चोक स्थित विमान झ्याल ।



चित्र ४७.     पाटन दरवार स्थित विमान झ्याल ।



चित्र ४८     भक्तपुर दतात्रयको पुजारी मठ स्थित तोरण सहितको विमान झ्याल ।



चित्र ४९.　　पाटन दरबारमा अवस्थित विमान झ्याल ।



चित्र ५०.　　भक्तपुर दत्तात्रय चोक स्थित मयुर झ्याल ।



चित्र ४१. भक्तपुर दत्तात्रय चोक स्थित मयुर झ्याल ।



चित्र ४२. काठमाण्डौं बसन्तपुरको कुमारी घरमा अवस्थित तोरण सहितको मयूर-झ्याल



चित्र ५३. पाटन मङ्गलबजार स्थित चार नारायण मन्दिर



चित्र ५४. पाटन सिगवहिलको चामुण्डा मन्दिर अगाडिको सत्तलमा सूर्यमुरी झ्याल ।



चित्र ५५.　काठमाण्डौं हनुमान ढोका स्क्वायरको श्वेत भैरबको दायाँ र बायाँ स्थित तोरण सहितको सूर्यमुरी झ्याल ।



चित्र ५६.　काठमाण्डौं वसन्तपुरको कुमारी घरमा सूर्यमुरी झ्याल ।



चित्र ५७.    भक्तपुर पुजारी मठ स्थित संझ्याल ।



चित्र ५८.    पाटन तलछेँमा स्वरा झ्याल ।

# ३. झ्यालका अंग प्रत्यङ्गहरू

## क) गा: झ्याल

| प्रचलित स्थानीय नाम | नेपाली | English | नक्सा |
|---|---|---|---|
| पौ | छाना | Pau (Roof) | |

## ख) आँखी–झ्याल

| प्रचलित स्थानीय नाम | नेपाली | English | नक्सा |
|---|---|---|---|
| ई चिकं | ईंठाकार बुट्टा | Echika (Diamond mesh) | २ – क |
| उफ्योधि | झ्यालको थाम उभिने विशेषाकारको लाम्चो आधार | Uphyodhi (Horizental base for the attached pier of window) | २-७ |
| कोलां | कोलां | Kolaã (Frame) | २ – ४ |
| खलु पोतायुतु | संगार | Khalu potäyĕtu (Stepped bottom horizontal member of the frame) | २ – ९ |
| तांगा पोतायतु | – | Tängä potäyĕtu (Stepped top horizontal member of the frame) | २ – ९ |
| तिका | – | Tikä (Sub-diagonal member of a wooden jolly) | २ – २ |
| थांचामो | उफ्योधिको दुई छेउमा रहेको थांचाको आधार | Thächämo (base of the attached pier on either side of Uphyodhi) | २ – ८ |




नक्सा १ : गाझ्याल
Sketch 1 : Gä Jhyä

| प्रचलित स्थानीय नाम | नेपाली | English | नक्सा |
|---|---|---|---|
| दुचु | भित्री चौकोस | Duchu (Internal frame) | २ – १० |
| द्योकु | देव-देवता रहने कोर्लाको एक भाग | Dyoku (Part of the frame where the gods are carved) | २ – ३ |
| निर्गःचा | नागलको एक नाम | Nirgachä (Name of Name of a circular pattern) | २ – घ१ |
| पले | कमल | Palĕ (Lotus) | २ – ६ |
| वाहा पोतायुतु | बारामा कुंदेर बनाएका खुड्किला | Bähä potäyetu (Steps carved on the style) | २ – १३ |
| लः च्व | पानी मल | Lacho (Horn) | २ – ५ |
| मलेःग्वा | मरीचाकार बुट्टा | Malĕgwä (Pattern of pepper) | २ – ग |
| माःक | – | Mäkä (Main–diagonal member of a wooden jolly) | २ – ग२ |
| माः चिकं | – | Mächikă (Square mesh) | २ – क |
| मिखा फुसी | आँखी भौं आकारको बुट्टा | Mikhäphusi (Eyebrow) | २ – १ |
| मू थांचा | मूल थाम | Muthaächä (Main attached pier) | २ – १२ |
| याको | कासी | Yako (Arm pit) | २ – १४ |
| हथंकु | पानी मलको दायाँ बायाँको सोभ्रो भाग | Hathăku (Stepped vertical member of the horn) | २ – १५ |
| हलःग्वा | हर्रो आकारको बुट्टा | Halagwä (Chebulic pattern) | २ – घ |
| हाछें | वारूलाको चाकाकारको बुट्टा | Hächhĕn (Honey comb) | २ – ग४ |

